

क्वयेर युथ ग्रुप

**Queer Youth Group**

दर्ता नं : २४४९३५/०७७/०७८

स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

---

**नेपाल संवत् ११४१ दिल्ला १९**

**मिति २०७८ असार २२**




श्री स्वास्थ्य तथा जनसंख्या मन्त्रालय,
येँ (काठमाडौँ) ।

**विषय : कोभिड-१९ विरुद्धको खोप प्रदान र पारलैङ्गिक तथा विविध लैङ्गिक पहिचानका व्यक्तिहरूको परिचयपत्र सम्बन्धी ।**

महोदय,

उपरोक्त सम्बन्धमा नेपालमा कोभिड-१९ विरुद्ध प्रदान गरिने खोप कार्यक्रम र पारलैङ्गिक तथा विविध लैङ्गिक पहिचानका व्यक्तिहरू (Transgender & Gender Diverse persons) को परिचयपत्र सम्बन्धी हामी यस संस्थाले नेपाल सरकारको ध्यानाकर्षण गराउन चाहन्छौं । पोहोर साल पनि बन्दाबन्दीका क्रममा सरकारले जनतालाई उपलब्ध गराएको राहत कार्यक्रम तथा खोप कार्यक्रममा पारलैङ्गिक तथा विविध लैङ्गिक पहिचानका व्यक्तिहरूले आफ्नो परिचयपत्रका कारण विभेद, लाञ्छना र बाधा बोग्नुपरेको यहाँलाई अवगत गराउन चाहन्छौं ।

नेपालको संविधान, अन्तर्राष्ट्रिय कानून तथा नेपालको सर्वोच्च अदालतको फैसलाहरूले समेत सुनिश्चित गरेको लैङ्गिक पहिचान सहितको परिचयपत्रको व्यवस्था कुनै ऐन कानूनमा कार्यन्वयन नहुँदा हामी पारलैङ्गिक तथा विविध लैङ्गिक पहिचानका व्यक्तिहरू आफ्नो लैङ्गिक पहिचान विपरीतको परिचयपत्र बोक्न बाध्य छौं । हामी मध्ये जो आफ्नो लैङ्गिक पहिचान अनुसार जीवनयापन गर्दैछौं, हाम्रो परिचयपत्र संशोधन नहुँदा यसले दैनिक जीवनमा समस्या ल्याएको त छ, तर कोभिड-१९ व्यवस्थापन तथा खोप सम्बन्धी कार्यक्रमहरूबाट लाभान्वित हुन समेत बाधा पुऱ्याएको छ । अझै पनि हामी पारलैङ्गिक महिलाहरू जो खुलेर महिलाको पहिचानमा जीवनयापन गर्दैछौं, हाम्रो परिचयपत्रमा अझै पुरुष र सोही लैङ्गिकता झल्काउने हामीलाई शिशुवास्थमा अभिभावक/संरक्षकले दिएको नाम उल्लेख छ । हामी पारलैङ्गिक पुरुषहरू जो खुलेर पुरुषको पहिचानमा जीवनयापन गर्दैछौं, हाम्रो परिचयपत्रमा अझै महिला र सोही लैङ्गिकता झल्काउने हामीलाई शिशुवास्थमा अभिभावक/संरक्षकले दिएको नाम उल्लेख छ । हामी महिला र पुरुष बाहेक अरु लैङ्गिक पहिचान भएका व्यक्तिहरूको पनि आफ्नो लैङ्गिक पहिचान अनुसार परिचयपत्र कायम हुन सकेको छैन भने हामी महिला वा पुरुष नै भनि पहिचान गर्ने पारलैङ्गिक महिला तथा पुरुषहरूलाई पनि बाध्यकारी 'अन्य' भन्ने पहिचान दिएको छ । ती व्यक्तिले आफूलाई महिला भनि पहिचान गर्ने र सोही लैङ्गिकता अनुसार प्रस्तुत भएको तर परिचयपत्रमा त्यसभन्दा फरक नाम तथा लैङ्गिकता




ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३

 http://fb.com/QYGnepal/
 qygnepal  QueerYouthGroup





उल्लेख भएको वा ती व्यक्तिले आफूलाई पुरुष भनि पहिचान गर्ने र सोही लैङ्गिकता अनुसार प्रस्तुत भएको तर परिचयपत्रमा त्यसभन्दा फरक नाम तथा लैङ्गिकता उल्लेख भएको कारणले जुनसुकै सेवा सुविधाबाट हामी सँधै नै वञ्चित भएका छौँ नै । लैङ्गिक पहिचान अनुसारको परिचयपत्र सम्बन्धी कुनै कानूनी व्यवस्था नहुँदा हामीलाई यो जटिल अवस्थाको सृजना भएको हो ।

कोभिड-१९ खोपको लागि नागरिकता प्रमाणपत्र वा अरु कुनै परिचयपत्र अनिवार्य पेश गर्नुपर्ने भएकाले यसरी व्यक्तिको लैङ्गिक अभिव्यक्ति वा जीवनयापनको लैङ्गिकता (Lived gender) र परिचयपत्रमा उल्लेख नाम तथा लैङ्गिक विवरण अमेल खाँदा नीज व्यक्तिहरूलाई दुर्व्यवहार, हिंसा, लाञ्छना र विभेद हुने र खोपबाट नै वञ्चित हुने अवस्था आउन नदिन हामी स्वास्थ्य तथा जनसंख्या मन्त्रालय लगायत जो जसलाई सम्बन्धित सबैको ध्यानाकर्षण गराउन चाहन्छौं ।

लैङ्गिक पहिचान अनुसारको परिचयपत्र नभएकै कारण हामी पारलैङ्गिक तथा विविध लैङ्गिक पहिचानका व्यक्तिहरूलाई कोभिड-१९ विरुद्धको खोपबाट वञ्चित नगरियोस् र तसर्थ हामीले यस पत्रमा उठाएको समस्याको जानकारी सहित परिचयपत्रमा उल्लेख नाम तथा लैङ्गिक विवरण आफ्नो जीवनयापनको लैङ्गिकतासँग अमेल खाने व्यक्ति खोपका लागि आएमा ती व्यक्ति प्रति संवेदनशील भई व्यवहार गर्नु, गोपनीयता कायम गर्नु र त्यसकै कारण खोपबाट वञ्चित नगर्नु नगराउनु भनि खोप कार्यक्रममा संलग्न सबै तहमा सूचना प्रवाह हुने गरि पत्राचार गर्न गराउन निवेदनार्थः छौँ ।

रुक्शना

रुक्शना कपाली
कार्यकारी निर्देशक

